بسم الله الرحمن الرحيم



पुस्तक पाइने ठेगाना -:
इस्लामिक गाइडेन्स सेन्टर कपिलवस्तु
नगरपालिका
व.नं. ९ महुवा तौलिहवा कपिलवस्तु (नेपाल)
सम्पर्क नं. ००९७७-९८४७०३०७८०
९७२७६४९२३८
इस्लामिक गाइडेन्स सेन्टर रबवा अल् रियाज
सउदी अरबीया

# लेखकको विचार

अलहम्दो लिल्लाहे नहमदोहु व नस्तईनोहु व नस्तगफिरहु व नऊजो बिल्लाहे मिन शोरूरे अनफोसेना व मिन सईयाते आमालेना, मैँयहदेहिल्लाहो फलामोजिल्ला लहु व मैँयुजलिल्हो फला हादिया लहु व अश्हदोअल्लाइलाहा इल्लल्लाहो व अश्हदो अन्ना मोहम्मदन् अब्दहु व रसूलहु । (अम्मा बअ्द)

समस्त प्रकारका प्रशंसाहरू अल्लाहकै लागि छन् जसले सर्म्पूण ब्रह्माण्डलाई उत्पन्न गऱ्यो, र अल्लाहको शान्ति अवतरित होस् अन्तिम संदेष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम र उहाँको घरपरिवार र साथीहरू माथि र उनी सबैहरू माथि जुन यस इस्लामको प्रचार प्रसार गरे र मुहम्मदको पद्धतिलाई उत्तम मानी उसै माथि हिंडी आफ्नो जीवन व्यतीत गरे ।

प्रस्तुत पुस्तिकामा मैले स्वतन्त्रताको सही अर्थ वर्णन गर्ने प्रयास गरेको छु साथै नास्तिक र अनास्थावान समूहहरू नजिक यसको अर्थ के हो यसलाई पनि वर्णन गर्ने प्रयत्न गरेको छु । आशा छ कि यो पुस्तक समस्त भ्रम र शंकालाई समाप्त गरी सत्यपथमा लगाउने कार्य गर्नेछ ।

मलाई आशा छ कि यो सानो पुस्तिका तपाईहरूको लागि लाभप्रद सिद्ध हुनेछ। र अल्लाह यसबाट तपाईहरूलाई फाइदा पुऱ्याई मलाई आफ्नो दयाको पात्र बनाउन् । अल्लाह सित विन्ती छ कि मेरो यो सानो प्रयासलाई कबूल गरी मलाई र मेरो घरपरिवारका समस्त सदस्यहरूलाई स्वर्ग प्रदान गरुन् (आमीन)


**लेखक**

**अतीकुर्रहमान मोहम्मद इदरीस खान मक्की**

**कपिलवस्तु नगरपालिका वार्ड न.९ महुवा**

**तौलिहवा कपिलवस्तु नेपाल**

**मो.नं. ००९७७–९८४७०३०७८०**

**Mob.00977-9727649238**

बिस्मिल्लाहिर्रहमानिर्रहीम

स्वतन्त्रता अरबी शब्द **अल हुर्रीयः** को शाब्दिक अर्थ हो । स्वतंत्रता अथवा स्वतंत्र भने बित्तिकै दासत्व वा दासको उल्टो अर्थ बोध हुन्छ । तर यसको अर्थ र परिभाषा प्रत्येक समूहले अआफ्नो हिसाबले गरेको छ जसमध्ये केहीलाई अगाडि वर्णन गरिन्छ । तर वास्तवमा जब एउटा मान्छे स्वतंत्रताको शब्द सुन्दछ त त्यसको मास्तिष्कमा केवल एउटै अर्थ आउँछ त्यो अर्थ हो कुनै आर्को मान्छेको दास नहुनु । र यो नै यसको वास्तविक अर्थ हो । र यसै अर्थलाई इस्लामले पनि दर्शाएको छ ।

तर यस युगमा स्वतंत्रताको अर्थ र व्याख्या आफ्नो इच्छापूर्तिको लागि भनिन्छ कि तयसको अर्थ हो र्धमको जालबाट स्वतन्त्र हुनु, जुनकि सरासर गलत हो ।

कुरआन र हदीसमा यो शब्द प्रयोग गरिएको छैन, तर यसैसित मिल्दो शब्दको प्रयोग गरिएको छ जुन स्वतन्त्रताको अर्थ बोध गर्छ त्यो शब्दहरु हुन् **अल् हुर्र** अल् बकरः श्लोक नं. १७८, र **मुहर्रिर** आले इम्रान श्लोक नं.

३५, र **तहरीर** अन् निसा श्लोक नं. ९२, ....आदि । र हदीसमा पनि केही शब्द यसैसित मिल्दोरहेछन् जुन स्वतन्त्रताको अर्थलाई दर्शाउछन् ती निम्न हुन्: **हुर्र** र **तहर्रुर** बुखारीको हदीसमा, र **अहरार** तिर्मिजीको हदीसमा, र **हराइर** नेसाईको हदीसमा, र **मुहर्रिर** अबू दाऊदको हदीसमा ।

र इस्लाममा स्वतन्त्रताको अर्थ हो: त्यो प्राकृतिक स्वतंत्रता जसमा शिशुको जन्म हुन्छ । अर्थात कुनै मान्छेको दासत्वमा नहुनु मात्र अल्लाहको दासत्व कबूल गर्नु । र अल्लाहको दास्तवको अर्थ हो त्यसको पूजा गर्नु, त्यसले अवतरित गरेका निर्देशनहरू बमोजिम कर्म गर्नु .... आदि । र यो वास्तवमा त्यसैको हक हो त्यस बाहेक कसैको दासत्व कबूल गरी उसको पूजा गर्नु नै कसै आर्कोको दास हुनु प्रमाणित गर्छ जुन इस्लामीय दृष्टिले हराम छ । किनकि जसले जन्माएको छ त्यसको अज्ञा मान्नु नै मानवीय दृष्टिकोणले उचित छ ।

र शैखुल् इस्लाम इब्ने तैमियाको कथन छ कि स्वतन्त्रताको अर्थ हो हृदयको स्वतन्त्रता । (अल् उबूदीया ले इब्ने तैमिया)

र हिन्दु धर्ममा पनि दासत्व र स्वतन्त्रताको अर्थ लगभग इस्लाम झैं छ तर उनीहरू अल्लाहलाई एक मान्दैनन् तसर्थ कैयौंको पूजालाई जायज र उचित ठान्छन् ।

र यहूदी धर्म अर्थात इजराईलीहरू नजिक स्वतन्त्रताको अर्थ हो: "तल्मूदको विधानमाथि पूर्णत: विश्वास राख्नु" ( मफाहीमुल हुर्रीय: व तत्बीकातुहा, डा. अब्दुल अजीज अल् हुमैदी, प्रो. उम्म अल् कुरा युनिवरसिटि मक्क: अल् मुकर्रम: सउदी अरब, र madras rahh a texodus (32) )

र केही फलसफीहरूको कथन छ कि स्वतंत्रता मानवजातिको भलाई र उन्नति गर्नुलाई भनिन्छ, जसले मानवजातिको भलाई र उन्नति गर्दैन त्यो स्वतन्त्र छैन । ( मफाहीमुल हुर्रीय: व तत्बीकातुहा, डा. अब्दुल अजीज अल् हुमैदी, प्रो. उम्म अल् कुरा युनिवरसिटि मक्क: अल् मुकर्रम: सउदी अरब, महासिनुल कलिम पे.११३ )

र शहीदुद्दीन इब्ने खलीफाको भनाई छ कि स्वतन्त्रताको अर्थ हो सुख शान्तिको जीवन । ( तबकातुल् अतिब्बा, इब्ने अबी असीबअह २/२५४, मफाहीमुल हुर्रीय: व तत्बीकातुहा,

डा. अब्दुल अजीज अल् हुमैदी, प्रो. उम्म अल् कुरा युनिवरसिटि मक्कः अल् मुकर्रमः सउदी अरब )

र सूफीहरूको कथन छ कि स्वतन्त्रता अराधनाको चर्मसीमालाई भन्छन ( कश्शाफ इस्तेलाहातुल् फुनून, मुहम्मद बिन अली अथ्थानवी )

र स्वतन्त्रताको अर्थ मीडिया नजिक होः स्वतन्त्रता पूर्वक समाचार एकत्रित गर्नु र त्यसलाई निष्ठापूर्वक जनसमुदाय सम्म रेडियो, टीवी... आदिद्वार पुऱ्याउनु । ( कानूनुल् एअलाम, डा. इब्राहीम अल् दाकूकी )

त कतिपयजना अर्थव्यवस्थालाई लागू गर्नुलाई नै स्वतन्त्रताको नाम दिन्छन् ।

र स्वतन्त्रता नास्तिक समूहहरूको विचारमा धर्मबाट मुक्ति प्राप्त गर्नु हो । र यसै अर्थले यस युगमा सबैको आकर्षण आफूतर्फ तानेको छ, र यसै अर्थद्वारा यी नास्तिकहरूले कतिपय आस्थावानलाई पथभ्रष्ट गरिसकेका छन् । र यसै अर्थको कारण आज पूरा विश्वमा उदण्डता, उपद्रव तांडव गरिराखेको छ । यिनीहरूले लुगा लगाउनुलाई पनि स्वतन्त्रता विरुद्ध भनि आफ्नो वासनाको पूर्ति गरिराखेका

छन्, तर हाम्रो अकल मारिएको छ हामी उनीहरूको विरोध गर्दैनौं । र यो अर्थको परिणाम यो हो कि यसै अर्थलाई आफ्नो मुद्दा बनाई यी नास्तिकहरूले पूज्यको इन्कार गरे । जुन आज यो भन्छन् कि कुनै ईश्वर छैन बरु सबै वस्तु र यो ब्रह्माण्ड आफै उत्पन्न भएको छ...आदि, त यो यसै विचार धाराको परिणाम हो ।

यस्तो अधर्मी अर्थ र कुराको कारण के हो यसलाई हेर्नु अति आवश्यक छ किनकि कारण नजाने सम्म त्यसको समाधान हुनै सक्दैन, तसर्थ यसको कारणतर्फ लागौं, र त्यो कारण हो ईसाई धर्मगुरुहरूको उदण्डता । हेर्नुस् !

माध्य युग अर्थात लगभग दशौं शताब्दीमा युरोपमा अनभिज्ञता र उपद्रव आफ्नो चर्मसीमामा पुगिसकेको थियो, र ईसाईहरूको धर्म स्थलहरू अर्थात कनीसाहरू ( गृजाघर, ईसाईहरुको पूजा स्थल ) दुराचार र दुर्व्यवहारका केन्द्रविन्दु बनिसकेका थिए, र कनीसा आफ्नो अधिपत्य समस्त युरोपियनहरू माथि कायम गरिसकेको थियो । र त्यसले यो आदेश गरिसकेको थियो कि धार्मिक गुरु बाबा, पोपहरूले भने अनुसार नै कर्म गर्नुपर्छ । र

पोपको उल्लंघनकारी धर्मको उल्लंघनकारी घोषित हुने छ ।
र बाबाहरूले यो आदेश जारी गरिसकेका थिए कि धर्म शास्त्र मात्र कनीसामा बस्ने पादरी, पोप, र बाबाहरू नै बुझ्न सक्छन् अरु कोही बुझ्न सक्दैन, यसरी धर्मगुरुहरूलाई ईश्वरको दर्जा प्रदान गरियो । र पापमुक्त हुनुको लागि बाबा र पादरी समक्ष गई आफ्नो अभिप्राय वर्णन गर्नु अनिवार्य गरियो, अर्थात यो सन्देश दिइयो कि मान्छे आफै आफ्नो पापको क्षमायाचना गर्न सक्दैन, बरु धर्मगुरुको मध्यस्ता अनिवार्य छ यसलाई पूणतः लागू गरियो । अर्थात यस्तो अवस्था आयो कि पादरी, बाबा, इस्कफहरूले जे पनि गरेमा कुनै सोधपूछ गर्न सक्दैन्थ्यो । यसरी कनीसाले सबैलाई आफ्नो दास बनायो र उनीहरूको धन सम्पत्ति, इज्जत सम्मान र महिलाहरू सबै धर्मगुरुहरूको अधीन भए ।
अनि यी धर्मगुरुहरूले धर्मलाई शासकहरूले चाहे अनुसार परिवर्तित गर्दै गए, र सबै अनुयायीहरूलाई आफ्नो र शासकको दास बनाए । यसले गर्दा ईसाईहरूमा धर्मबाट घृणाको सृजना भयो, र यसै घृणाको कारण

स्वतन्त्रताको परिभाषा नै परिवर्तित गरियो र भनियो कि स्तन्त्रताको अर्थ हो धर्मबाट छुट्कारा अर्थात धर्मलाई त्याग्नु ।
र दोस्रो कुरो के थियो भने कनीसाले सबैको अकल र सोचलाई पनि आफ्नो दास बनाउन खोज्यो, अनि विज्ञानमाथि रोक र पाबन्दी लगायो किनकि विज्ञान उनीहरूले बनाएको धर्मको निर्देशनहरूको विरोध गऱ्यो । अनि ठूला ठूला वैज्ञानिकहरूलाई जीवित नै आगोमा पोलेर मारियो । जसरी गालीलीयो जसले सर्वप्रथम यो पत्ता लगाएको थियो कि धरती सूर्यको चक्कर लगाउँछ । र यस्तै वाफून, नीयुतन, कोबरनेकोस, वतस्स, अल्बानो, जीयोर्दानोबोरोनो, शीकोदा स्कोली, दीरोमेन्स, बलाज ..... आदिलाई मारियो जुन त्यस बखतका योग्य वैज्ञानिकहरू थिए । र सन् १४८१ देखि १४९९ ई.संवत सम्म लगभग दश हजार व्यक्तिको ज्यान लिइयो मात्र यस कारण कि उनीहरूले विज्ञानका कुरा गरेका थिए र त्यसमा रिसर्च गरेका थिए । ( अल् इत्तेजाहातुल् फिक्रीयः अल् मुआसेरः, डा. जुमअः अल् खौली, प्रो. इस्लामीक युनिवरसिटि मदीनः अल मुनव्वरः सउदी अरब )

यसले गर्दा पनि मान्छेहरू धर्मलाई त्याग्नुलाई नै स्वतन्त्रता भन्न थाले । र ईसाईहरू धर्मबाट घृणालाई आफ्नो मनमा लिई कनीसाको दासत्व र अधिपत्यमा रहीरहे यहाँसम्म कि मुस्लिम र ईसाईहरू बीच पन्द्रहौं शताब्दीमा युद्ध हुनथाल्यो र त्यसै युद्ध बीच कतिपय ईसाईहरू कनीसाको विरोधलाई दर्शाए र कनीसाको बलपूर्वक विरोध गरे । ती विरोधीहरू मध्ये पहिलो मान्छे थियो **मार्टन लोथर** जसले ईसाई धर्मका निर्देशनहरूलाई शैतानी निर्देशन भन्यो । त्यसपछि कालफनले यस धारणालाई अगाडि बढायो । अनि मान्छेहरू यस धारणासित सहमत हुँदै गए र कनीसाको विरोध हुँदै रह्यो । अनि धर्मलाई त्याग्नु नै वास्तविक स्वतन्त्रता हो यस धारणाको प्रचार हुँदै रह्यो ।

अनि यसै धारणाको कारण पछि आएर नास्तिकताको रूप धारण गऱ्यो, र यसै धराणाले गर्दा उनीहरूले ईश्वरको इन्कारी भए । र भन्न थाले कि यो यत्रो ठूलो ब्रह्माण्ड आफै उत्पन्न भएछ र आफै प्रचलित छ, र मानव वास्तवमा जनावरको प्रगतिशील क्रमको अन्तिम रूप हो । यसलाई बनाउनेवाला कोही

छैन बरु आफै जनावरबाट यस आकारमा परिणत भएको छ । र यस्तै पुर्नजीवनको पनि इन्कार गर्छन् स्वर्ग र नर्कको पनि इन्कार गर्छन् ...... आदि । ( अल् इत्तेजाहातुल् फिक्रीयः अल् मुआसेरः, डा. जुमअः अल् खौली, प्रो. इस्लामीक युनिवरसिटि मदीनः अल मुनव्वरः सउदी अरब )

उपरोक्तमा वर्णन गरिएका कुराबाट यो स्पष्ट हुन्छ कि यस नास्तिक धारणाको मुख्य कारण हो ईसाई धर्मगुरुहरूको अत्याचार र धर्मको गलत व्याख्या, र त्यसका निर्देशनहरूलाई परिवर्तित गर्नु । यसै अत्याचारको कारण यो निराधार धारणाको कल्पना गरियो ।

आज यसै धारणको प्रचार पूर्णतः लागू गर्ने प्रयास र यसको वर्चस्व कायम गर्ने दुष्प्रयास चलिरहेको देख्न सकिन्छ । युरोप होस् वा अमेरिका, एशिया होस् वा अफ्रीका अथवा अरब सबै यसको चपेटमा आइसकेका छन् । तर यसको प्रभाव मुसलमानहरू माथि नहुने बराबर छ किन ?

वास्तवमा यो धारणा पूर्णतः इस्लाम विरोधी छ, र समस्त धर्म विरोधी छ, तर अरु धर्मावलम्बीहरू यसबाट यस कारण प्रभावित

भए किनकि उनीहरूले आफ्ना धर्मग्रन्थमा थपघट गरिसकेका छन् तसर्थ यो धारणा र उनले बनाएको धार्मिक निर्देशनमा केही अधिक भिन्नता देखिदैन ।

तर इस्लाम धर्मलाई आज सम्म कोही पनि परिवर्तित गर्ने दुष्प्रयासमा सक्षम र सफल हुनसकेको छैन किनकि यसको रक्षाको जिम्मेवारी हाम्रो परम् पूज्यले आफै लिनु भएको छ । अल्लाहको कथन छ :

अर्थ : (निःसन्देह) हामीले नै कुरआनलाई उतारेका छौं र हामीनै यसको संरक्षक हौं । ( सूरतुल् हिज्र ९ )

त जब यसको एक अक्षर पनि परिवर्तित भए छैन भने यसमा एक पटक हेर्ने बित्तिकै तपाईलाई सत्यसित अवगत गराउने छ, र तपाईलाई यस प्रश्नको उत्तर पनि दिनेछ कि मुसलमानहरू यस धारणाबाट किन प्रभावित हुँदैनन् । साथै यस धारणाको सत्यता र असत्यता माथि पनि ज्ञान मिल्ने छ साथै यसबाट बाँच्ने तथ्य र कुराको पनि जानकारी हुनेछ ।

वास्तवमा इस्लामका निर्देशनहरू यति मनमोहक छन् कि त्यसलाई जाने पश्चात कुनै

बुद्धिमान मान्छे कुनै आर्को धारणाबाट प्रभावित हुनै सक्दैन । किनकि इस्लाम मध्यमार्ग तर्फ बोलाउँछ, नत कसैलाई यति छूट दिन्छ कि त्यो आफूलाई वा कसैलाई ईश्वरको दर्जा देओस् , नत यति बन्देज लगाउँछ कि मान्छे आफूलाई कसैको दास ठानोस् ।

वास्तवमा हामी मात्र आफ्नो पालनकर्ताका दास हौं, र कुनै मान्छेलाई यो अधिकार प्राप्त छैन कि हामीलाई आफ्नो दास बनाओस्, र हामीमाथि आफ्नो अधिपत्य र वर्चस्व जनाओस् । किनकि इस्लामीय दृष्टिले हाकिम, राजा, एवं शासक मात्र प्रजाको खादिम (सेवक) बाहेक केही होइन, त्यसलाई अल्लाहले राजसत्ता यस उद्देश्यले प्रदान गरेछैन कि त्यो अरुलाई आफ्नो दास बनाओस् । हाँ यदि हामी आफै अल्लाहको दासत्वबाट अटेरी गर्छौं भने अल्लाह हामीलाई हामी जस्तै मान्छेहरूको दास बनाएर हामीमाथि उनको वर्चस्व कायम गरिदिन्छ । त यस्तो अवस्थामा कुरो बेग्लै हुन्छ ।

इस्लामी सिद्धान्त अनुसार प्रत्येक व्यक्ति स्वतन्त्र छ, र कुनै मान्छेलाई यो अधिकार प्राप्त छैन कि कसैलाई कुनै प्रकारले दास

बनाओस् बरु युद्धमा बन्दी भएर दासबनेका मान्छेहरूलाई स्वतन्त्र गर्नुलाई महापुण्य भनेको छ । रसूल सल्लल्लाहो अलैहे वसल्लमको फर्मान छ :

अर्थ : जसले कुनै मुसलमान दासलाई स्वतन्त्र गर्छ अल्लाह त्यस दासका एक एक अङ्गको बदलामा स्वतन्त्र गर्ने मान्छेको एक एक अंगलाई नर्कबाट स्वतन्त्र गर्छ (अर्थात मुक्त गर्छ) । ( बुखारी, हदीस नं.२३८१ )

तर यसको साथ साथै यति छूट पनि दिदैन कि मान्छे आफै नै ईश्वर बन्न खोजोस् जस्तो कि फिरऔन र नमरूदले दावी गरे । नत कसैलाई यति छुट दिन्छ कि अल्लाहलाई छाडी कसै आर्कोलाई ईश्वरको दर्जा देओस् जसरी ईसाई यहूदी सूफी र हिन्दुहरू गरे । बरु इस्लामले माध्यमार्गमा नै रहने आदेश गऱ्यो । र समस्त प्राणीलाई उसको उत्तम हक अधिकार दियो ।

यसैकारण इस्लामले जीवनका हरेक क्षेत्रमा यस्ता कानूनहरूलाई लागू गऱ्यो जसले गर्दा कोही पनि कसैलाई आफ्नो दास बनाउन दुसहास र दुष्प्रयास गर्नुमा सफल नहुन्सकोस् । जसरी पैतृक धनमा सबैको भाग सुनिश्चित गऱ्यो ताकि सबै एक आर्का समान रहुन् र

समस्त धन एउटै मान्छेको अधीन सीमित नरहोस्, जसले गर्दा त्यो मान्छे अरुलाई आफ्नो दास बनाउन खोजोस् ।
र यसको साथ साथै फोजूल खर्चीबाट पनि मनाही गऱ्यो ताकि धनलाई नाश गरी कसैको दास बन्ने अवस्था नआओस् । अल्लाहको फर्मान छ :
अर्थ : हे आदमको सन्तति प्रत्येक नमाजको बेला तिमीहरू राम्रो सँग लुगा लगाउने गर, र प्रयाप्त खाने पिउने गर तर सीमाभन्दा अघि नबढ । नि:सन्देह अल्लाह सीमाभन्दा अघि बढ्नेलाई मन पराउँदैन । ( सूरतुल् अअ्राफ ३१ )
र आर्को ठाउँमा अल्लाहको भनाई छ :
अर्थ : र मृतकको सारा माल समेटेर खाइदिन्छौ । ( सूरतुल् फज्र १९ )
र तेस्रो कुरो के छ भने आफ्नो माल सम्पत्तिबाट निमुखा, असहाय, गरीबगुर्बाहरूलाई दान गर्नुमाथि जोर दिन्छ ताकि निमुखाहरू कसैको दासत्वमा नपरुन् । अल्लाहको फर्मान छ :
अर्थ : र अल्लाहले जुन सम्पति तिमीलाई प्रदान गरेको छ त्यसमध्येबाट उनीहरूलाई

पनि देऊ र आफ्नो दासीहरूलाई यदि उनीहरू पवित्र रहन चाहन्छिन्, भने सांसारिक जीवनको फाइदा प्राप्त गर्नको निम्ति उनीहरूलाई व्यभिचारको लागि बाध्य नगर्नु । र जसले उनलाई बाध्य गर्ने छ, त निश्चय नै उनीहरूलाई बाध्य गरिए पश्चात अल्लाहले उनीहरूको यस गल्तीको लागि क्षमा प्रदान गर्नेवाला छ। ( सूरतुन् नूर ३३ )

र आर्को ठाउँमा अल्लाहको भनाई छ :

अर्थ : (तसर्थ) अल्लाह र उसका रसूलमाथि ईमान ल्याऊ र जुन मालसामानमा उसले तिमीलाई अरुहरूको उत्तराधिकारी बनाएको छ त्यसमध्येबाट खर्च गर। त तिमीहरू मध्ये जसले ईमान ल्याए र खर्च (दान) गरिरहे उनीहरूको निम्ति ठूलो प्रतिफल छ। ( सूरतुल् हदीद ७ )

अर्थात इस्लामले अत्याचार, व्यभिचार, ईर्ष्या, शत्रुता, निर्लज्जता ..... आदिलाई जुन अमानवीय छन् सबैलाई हराम गरिदिएको छ, ताकि समाजमा विगार उत्पन्न नहोस् र अनुयायीहरू धर्मबाट घृणा गरी धर्मको इनकारी नबनुन् जस्तो कि ईसाईहरूले गरे ।

यसले गर्दा मुसलमानहरू यस्ता निराधार धारणाहरूबाट प्रभावित हुँदैनन् बरु स्वतन्त्रतापूर्वक आफ्नो पालनकर्ताको महिमा गान गर्छन् ।

हे भाइ ! धर्मानुसार कर्म गरेमा हाम्रो स्वतन्त्रता भंग हुँदैन, तपाईको विचारमा स्वतन्त्रताको अर्थ के हो ? के एक मान्छे कुनै आर्को व्यक्तिको हक खोसोस् त्यसलाई स्वतन्त्रता भन्नुहुन्छ, वा कुनै महिला कुकुरसंग सम्भोग गुर्नमा स्वतन्त्र रहोस् त्यसलाई ? यदि तपाईको विचारमा यो नै स्वतन्त्रताको परिभाषा हो भने हामी यस परिभाषालाई मान्दैनौं किनकि यो स्वतन्त्रता होइन बरु अनभिज्ञता हो सुधारको बाटो होइन विकृतिको बाटो हो ।

हे भाइ ! स्वतन्त्रताको लागि पनि कानून र सीमा त हुनैपर्छ किनकि एउटा मान्छे व्यभिचार गरेर भन्छ कि मत स्वतन्त्र छु जेपनि गरूँ तपाईलाई के कष्ट छ, मलाई के गर्नुछ के गर्नु छैन मलाई थाहा छ , कसैको कुरा मानेमा म स्वतन्त्र कसरी रहन सक्छु ?

तर हे भाई यो परिभाषा आजसम्म कसैको विवेकमा आउन सकेछैन । त्यो महिला जसको बलात्कार भएछ त्यसको स्वतन्त्रता खोइ ? यो

कहाँको कानून हो कि एउटा स्वतन्त्र रहोस् आर्को दास, अनि स्वतन्त्रा कहाँ भयो यो त अत्याचार भयो ।
कसैको धन खोसि यो भन्नु कि मत स्वतन्त्र छु कहाँको बद्धिमानी हो यो त मूर्खता हो । यसले गर्दा स्वतन्त्रता कायम राख्नुको लागि कानून त अवश्य हुनुपर्छ । अनि जसले यस ब्रह्माण्डको संरचना गरेछ त्यसको कानून भन्दा राम्रो कानून कसको हुन्सक्छर ?
र त्यस स्रष्टाको अन्तिम कानून एवं संविधान हो **पवित्र कुरआन** जुन प्रलय सम्मको लागि अवतरित गरिएको छ जसका निर्देशनहरू सबैका लागि हुन्, र जसमा कुनै पनि थपघट भएछैन ।
हे भाइ ! इस्लामका निर्देशनहरू हाम्रो स्वतन्त्रतालाई सबैदिशाबाट सुरक्षित गर्छन्, तसर्थ एक पटक इस्लामीय निर्देशनलाई पढी त्यसमा विचार त गर्नुस् अनि तपाईलाई थाहा भइहाल्छ ।
हे भाइ ! इस्लाम अरु धर्म झैं यो मान्दैन कि यसका निर्देशनहरू केवल धर्मगुरुहरू बुझ्न सक्छन्, बरु इस्लामको आव्हान छ कि यसलाई सबै पढुन् र बुझुन् र यसका श्लोकहरूमा

चिन्तन् मनन् गरुन् । यति मात्र होइन बरु यसका निर्देशन र श्लोक एवं तर्कहरूमा चिन्तन् मनन् गर्नुलाई पूजाको सर्वोत्कृष्ट दर्जा प्रदान गरिएको छ अल्लाहको फर्मान छ :

अर्थ : र ईमान राख्नेवालाहरूको निम्ति धरतीमा धेरै निशानीहरू छन् । र स्वयं तिम्रो व्यक्तित्वमा पनी त के तिमीले देख्दैनौ ? ( सुरतुज्जारियात २०,२१ )

र आर्को ठाउँमा अल्लाहको फर्मान छ :

अर्थ : के उनीहरूले ऊँटतिर देख्दैनन् कि तिनीहरू कुन तरिकाले पैदा गरिएका छन् । र आकाशतिर के कस्तो उच्च गरिएको छ ? र पहाडतिर के कुन प्रकारले खडा गरिएकोछ ? र धरतीतिर कि कसरी बिछाइएको छ? (सूरतुल् गाशियः १७-२०)

र आर्को श्लोकमा अल्लाहको फर्मान छ :

अर्थ : त के उनीहरूले कुरआनमा सोचविचार गर्दैनन्, वा उनीहरूको हृदयमा ताल्चा लागेका छन् । ( सूरतु मुहम्मद २४)

र आर्को ठाउँमा अल्लाहको वर्णन छ :

अर्थ : निःसन्देह आकाशमण्डल र पृथ्वीको सृष्टि र रात र दिनको चक्रमा बुद्धिमान मानिसहरूका लागि निशानीहरू छन् । जुन

मानिसहरूले उठदा, बस्दा र पल्टिरहँदा अल्लाहको स्मरण गर्दछन् र आकाशमण्डल र पृथ्वीको सृष्टिमाथि चिन्तन गर्दछन् र भन्दछन् कि हे हाम्रो पालनकर्ता ! तिमीले यी सबै निरुद्देश्य सृष्टि गरेको होइन । तिमी पवित्र छौ । हामीलाई नर्कको आगोबाट बचाऊ । ( सूरतु आले इम्रान १९०,१९१ )

अर्थात इसलामले विचार गर्नुतर्फ सबैलाई आमंत्रित गरेको छ कुरआनका निर्देशनहरूमा जति विचार गरिन्छ त्यति नै सत्यता प्रष्ट हुनेछ ।

त हे भाई स्रष्टाको आज्ञापालन गर्नु कदापि दासत्व होइन । यो त हाम्रो परम् कर्तव्य हो, र यो नै वास्तविक भक्ति हो । अल्लाहको फर्मान छ :

अर्थ : मैले जिन्न र मानिसहरूलाई यसकारण मात्र सृष्टि गरेको छु ताकि मेरो उपासना गरुन् । म उनीहरूबाट जीविका चाहन्न र न यो चाहन्छु कि मलाई खुवाऊन् । अल्लाह आफै जीविका प्रदान गर्नेवाला शक्तिशाली, दृढ छ । ( सूरतुज्जारियात ५६-५८ )

के उपकार गर्ने मान्छेको आभार प्रकट गर्नु दासत्व हो ? यदि होइन भने आफ्नो

पालनकर्ताको आभार प्रकटगर्दा यो दासत्व कसरी हुनसक्छ ? तपाई नै विचार गर्नुस् !
अल्लाहको फर्मान छ :
अर्थ : र त्यही अल्लाह हो जसले तिम्रो लागि कान र आँखाहरू तथा हृदयहरू बनाए । तर तिमीले थोरै कृतज्ञता प्रकट गर्दछौ । र उही त हो जसले तिमीलाई सृष्टि गरेर पृथ्वीमा फैलाई दियो र उसैतिर तिमी एकत्रित हुने छौ । र उही हो जसले जीवन प्रदान गर्दछ, र मृत्यु दिन्छ र एकपछि अर्को आउने रात र दिन उसैको अधिकारमा छ, के तिमीले बुभ्रदैनौ ? ( सूरतुल् मूमिनून ७८ - ८० )
हे भाइ ! यसले गर्दा ईश्वरको आदेशलाई कार्यन्वयन गर्नु दासत्व कसरी हुनसक्छ यो त कृतज्ञता प्रकट गर्नु हो, यस बाहेक केही होइन । यसले हे भाइ भ्रमको जालबाट बाहिर अउनुस् र स्वतन्त्रताको सत्य परिभाषालाई बुभ्रनुस्, अनि आफ्नो पालनहारको मार्गमा हिंडि त्यसैतर्फ प्रवृत्त हुनुस् यो नै उद्धारको मार्ग हो र यसैमा हाम्रो सुख शान्ति स्वतन्त्रता नीहित छ ।
हे भाइ ! नास्तिक र अधर्मीहरूको फकाईमा आई आफ्नो लोक परलोकको जीवनलाई

कष्टमय नबनाऊ । यी नास्तिकहरूलाई पनि एक दिन मृत्यु आउने छ र तपाईलाई पनि । के कसैको नास्तिकताले उसलाई मृत्युबाट बचाउन सकेको छ ? यस्तो त आज सम्म भएछैन नत हुनसक्छ, चाहे उनीहरू ईश्वरमा विश्वास राखुन् वा नराखुन् । तसर्थ सबैलाई यदि मृत्यु आउने नै छ भने त्यस मृत्युको स्रष्टाको अवज्ञा किन गर्ने ? अल्लाहको फर्मान छ :

अअर्थ : प्रत्येक ज्यानले मृत्युको स्वाद चाख्नु पर्ने छ र तिमीलाई कियामतको दिन तिम्रा क्रियाकलापहरूको पूरापूर प्रतिफल प्रदान गरिने छ, तसर्थ जुन मानिसलाई नर्कको आगोबाट टाढा राखिनेछ र स्वर्गमा प्रवेश पाउनेछ, निश्चय नै उही सफल हुनेछ र संसारिक जीवन त भ्रमको सामान मात्र हो । ( सूरतु आले इम्रान १८५ )

र आर्को ठाउँमा अल्लाहको भनाई छ :

अर्थ : तिमी जुन ठाउँमा भए पनि मृत्यु आएर तिमीलाई समाती हाल्छ, चाहे तिमी बलियो किल्लामा नै किन नबस । ( सूरतुन् निसा ७८ )

हे भाइ ! यसले गर्दा आफ्नो स्रष्टाको अवज्ञा नगर्नु होला बरु त्यसैको कथन बमोजिम आफ्नो जीवन व्यतीत गरी त्यसको उपहारको अधिकारी बन्नु जुन उपहार मात्र तिम्रै लागि त्यार पारिएको छ । यो संसारिक जीवन त हाम्रो परीक्षाको लागि हामीलाई प्रदान गरिएको हो यसमा सफल हुने प्रयत्न गर । अल्लाहको भनाई छ :

अर्थ : र, हामीले कुनै न कुनै तरिकाबाट शत्रुको त्रास, भोकबाट, धन-सम्पत्ति, ज्यान र फलहरूको कमीबाट तिम्रो परीक्षा गर्नेछौं, (तसर्थ) धैर्य गर्नेहरूलाई शुभ सन्देश सुनाई दिनु । ( सूरतुल् बकर: १५५ )

हे भाइ ! अल्लाहले हामी सबैलाई मात्र एक पुरुष र एक महिलाद्वारा उत्पन्न गरेको छ, अनि कतिपय त्यसै स्रष्टाका इनकारी भए जसले उनीहरूलाई जन्माएको छ मात्र यस कारण कि केही उन्मादीहरूले उनीहरूलाई आफ्नो दास बनाएका थिए । हेर भाइ यदि कसैले कसैलाई दास बनायो भने ईश्वरको इन्कार किन गर्ने यो कहाँको निसाफ हो । अहमदले अत्याचार गरेमा जैदलाई किन दोष दिने यो त कुनै बुद्धिमत्ताको कुरो भएन । तसर्थ

पथभ्रष्टतालाई छाडी सत्मार्ग तर्फ लाग्नुस् यो मार्ग नै तपाईको वास्तविक स्वतन्त्रतालाई सुनिश्चित गर्छ ।
हे भाइ ! प्रलयको दिन नास्तिकता, धन सम्पत्ति, छोरा छोरी ..... आदि केही काम लाग्ने छैन, मात्र तपाईको आफ्नो कर्म नै तपाईको सहायक हुनेछ । याद राख्नुस् कि एक दिन तपाईलाई आफ्नो पालनकर्ता सामु उभिनु छ र त्यसका समस्त प्रश्नहरूको उत्तर दिनुछ । जब एउटा राजा उल्लंघनकारी सित सोधपूछ गर्छ त यस ब्रह्माण्डको स्रष्टा सोधपूछ किन गर्दैन अवश्य गर्ने छ यसको लागि जवाफ त्यार राख्नुस् । र त्यो जवाफ हो हाम्रो कर्म । तसर्थ हे बुद्धिजीविहरू अल्लाहले अवतरित गरेको अन्तिम ग्रन्थ कुरआनमाथि विश्वास गर र त्यसैको निर्देशन बमोजिम आफ्नो जीवन व्यतीत गरेर स्वर्गको अधिकारी बन । अल्लाहको फर्मान छ :
अर्थ : यस किताब (कुरआनलाई अल्लाहको गरन्थ हुनु)मा कुनै संदेह छैन । अल्लाहसंग डर मान्नेहरूका लागि मार्ग दर्शन हो । जो गैब ( अदृश्य)मा ईमान राख्दछन र सही ढंगले नमाज पढ्दछन् र हामीले प्रदान गरेकोबाट खर्च

गर्दछन् । र जसले तपाईमाथि अवतरित ( किताब) र तपाई भन्दा पहिलेका अवतरित ( किताबहरू) माथि ईमान राख्दछन् साथै परलोकमाथि पनि विश्वास राख्दछन् । तिनीहरू नै आफ्नो पालनकर्ताको तर्फबाट मार्गदर्शित छन्, र तिनी नै मुक्ति पाउनेहरू हुन् । ( सूरतुल् बकर: २-५ )

अन्तमा अल्लाह सित प्रार्थना छ कि अल्लाह हामीलाई धर्म इस्लामलाई पूर्णरूपले स्वीकार गर्ने सौभाग्य प्रदान गरुन् । र त्यसका समस्त निर्देशनहरूलाई अपनाई त्यसबाट लाभन्वित हुने सुअवसर प्रदान गरुन् । र हाम्रा माल सम्पत्ति र संतानमा वृद्धि गरुन् । र हाम्रा नि:संतान दाजुभाइ र दिदीबहिनीहरूलाई संतान प्रदान गरी उहाँहरूको मुटुलाई शितल पारुन् । र जेजति हामीले अज्ञानताले पापहरू गरेका छौं त्यसलाई क्षमा गरी हाम्रा पापहरूलाई पुण्यमा परिणत गरुन्, र हामीलाई कुरआन र हदीसको अनुशरण गर्ने शक्ति प्रदान गरी स्वर्ग प्रदान गरुन् । ( आमीन )

# समाप्त

*लेखक*

**अतीकुर्रहमान मोहम्मद इदरीस खान मक्की**

**कपिलवस्तु नगर पालिका वॉड नं.९**

**महुवा तौलिहवा कपिलवस्तु**

**नेपाल**

Mob. No.00977-9847030780-9727649238

00966-0501372254

Email-atiqkhannp1982@yahoo.com